# संविधान सभा

# संविधान अभिलेख अध्ययन तथा निर्क्यौल समिति

संबैधानिक समितिको प्रतिवेदनमा उल्लिखित विषयमध्ये **सहमति** भएका विषयहरुको निर्क्यौल सम्वन्धी
प्रतिवेदन, २०७१

संविधानसभा नियमावली, २०७० को नियम ६६ बमोजिम गठन भएको यस संविधान अभिलेख अध्ययन तथा निर्क्यौल समितिलाई सोही नियमावलीको उपनियम (५) र उपनियम (६) को व्यवस्था अनुसार संविधान सभामा रहेका अभिलेख तथा तत्कालीन संविधानसभाले संविधान निर्माणको लागि तयार गरेका दस्तावेज अध्ययन गरी सहमति वा असहमतिका विषय निर्क्यौल गरी विषयगत आधारमा पूर्ण वा आंशिक प्रतिवेदन तयार पारी सभामा पेश गर्ने कार्यक्षेत्र र जिम्मेवारी रहे अनुरुप तत्कालीन संविधानसभाको मिति २०६७/१०/१२ को वैठकबाट भएको अनुसूचीमा उल्लेख भए बमोजिमको निर्णयलाई आधार बनाई संबैधानिक समितिको प्रतिवेदनको संविधानको प्रारम्भिक मस्यौदामा रहेका विषयमध्ये **संविधान मस्यौदा समिति**मा पठाउन उपयुक्त हुने सहमतिका विषयहरु निर्क्यौल गरिएको यो प्रतिवेदन संविधानसभा नियमावली, २०७० को नियम ६६ को उपनियम (५) को व्यवस्था अनुरुप यस समितिको मिति २०७१।२।०८ गतेको निर्णयानुसार संविधानसभा समक्ष प्रस्तुत गरिएको छ ।

| सि.नं | विषय | सहमति भएको विषय | समितिको निर्क्यौल | कैफियत |
|---|---|---|---|---|
| १. | **प्रस्तावना** | *(संविधानसभाका सबै समितिहरुबाट संविधानको समग्र पक्षमा अवधारणापत्र र प्रारम्भिक मस्यौदा तयार गर्ने कार्य सम्पन्न भई सुझाव र निर्देशन सहित मस्यौदा एकीकरणको लागि संविधानसभाले संवैधानिक समितिमा पठाई नसकेको अहिलेको अवस्थामा भावी संविधानको मूल मर्म र समग्र सार खिच्ने गरी प्रस्तावनाको मस्यौदा गर्न सकिने अवस्था रहेन । संविधानको समग्र मस्यौदा तयार गर्ने क्रममा पूर्णता दिने गरी अहिले प्रारम्भिक रुपमा यो मस्यौदा प्रस्तुत गरिएको छ ।)*<br><br>हामी सार्वभौमसत्ता सम्पन्न नेपाली जनता;<br><br>नेपालको स्वतन्त्रता, सार्वभौमिकता, भौगोलिक अखण्डता र राष्ट्रिय एकता, स्वाधीनता एवं स्वाभिमानलाई अक्षुण राख्दै;<br><br>सामन्ती, निरंकुश, केन्द्रिकृत, एकात्मक र पितृसत्तात्मक राज्य व्यवस्थाले सृजना गरेका विभेद र उत्पीडनको पीडालाई **अनुभूति** गर्दै;<br><br>बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसाँस्कृतिक तथा क्षेत्रीय विविधतायुक्त विशेषतालाई आत्मसात गरी विविधता बीचको एकता, सामाजिक साँस्कृतिक ऐक्यबद्धता, सहिष्णुता र सद्भावलाई संरक्षण एवं प्रवर्द्धन गर्ने प्रण गर्दै;<br><br>वर्गीय, जातीय, क्षेत्रीय, भाषिक, धार्मिक, लैङ्गिक र वर्ण व्यवस्थाजन्य जातपात र छुवाछूत लगायत सबै प्रकारका विभेद **र उत्पीडन**को अन्त्य गरी आर्थिक समानता, सम्पन्नता र सामाजिक न्याय | प्रस्तावनाको अनुच्छेद १, २, ४, ५, ८ र ९ मा सहमति भएको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | बोल्ड गरिएका शब्दहरु तत्कालीन संविधानसभाको निर्देशन अनुरुप परिमार्जन गरिएको । |

| | | | | |
|---|---|---|---|---|
| | | सुनिश्चित गर्न समानुपातिक समावेशी र सहभागितामूलक मान्यताको आधारमा समतामूलक समाजको निर्माण गर्ने संकल्प गर्दै;<br><br>सामन्तवादका सबैखाले अवशेषहरुको अन्त्य गर्दै संघीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्थाको माध्यमद्वारा दीगो शान्ति, समृद्धि र विकासको आकांक्षा पूरा गर्न संविधानसभा मार्फत यो संविधान निर्माण गरी जारी भएको घोषणा गर्दछौं । | | |
| २. | **१.संविधान मूल कानून** | (१) यो संविधान नेपालको मूल कानून हो । यस संविधानसँग बाझिने कानून बाझिएको हदसम्म अमान्य हुनेछ ।<br>(२) यस संविधानको पालना गर्नु र संविधान बमोजिमका दायित्व पूरा गर्नु सबैको कर्तव्य हुनेछ । | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| ३. | **२.सार्वभौमसत्ता र राजकीयसत्ता** | (१) नेपालको सार्वभौमसत्ता र राजकीयसत्ता नेपाली जनतामा निहित रहेकोछ ।<br>(२) नेपाली जनताले नेपालको सार्वभौमसत्ता र राजकीयसत्ताको प्रयोग यस संविधानमा व्यवस्था भएबमोजिम गर्नेछन् । | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| ४. | **३.राष्ट्र** | बहुजातीय, बहुभाषिक, बहुधार्मिक, बहुसाँस्कृतिक विशेषतायुक्त, समान आकाङ्क्षा र नेपालको राष्ट्रिय स्वतन्त्रता, अखण्डता, राष्ट्रिय हित तथा समृद्धिप्रति आस्थावान् रही एकताको सूत्रमा आवद्ध सबै नेपाली जनता समष्टि रूपमा राष्ट्र हो । | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| ५. | **४.नेपाल राज्य** | (१) नेपाल स्वतन्त्र, अविभाज्य, सार्वभौमसत्ता सम्पन्न, धर्मनिरपेक्ष, समावेशी **लोकतन्त्रात्मक** समाजवाद उन्मुख, गणतन्त्रात्मक, **बहुजातीय** राज्य हो जसलाई संक्षिप्तमा नेपाल भनिनेछ ।<br>(२) नेपाल राज्यभित्र अनुसूची-१ मा उल्लेख भएबमोजिमका संघीय इकाईहरू रहनेछन् ।<br>(३) नेपालको क्षेत्र देहाय बमोजिम हुनेछः-<br>(क) यो संविधान प्रारम्भ हुँदाका बखतको क्षेत्र, र<br>(ख) यो संविधान प्रारम्भ भएपछि प्राप्त हुने क्षेत्र । | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | तत्कालीन संविधान सभाको निर्णयानुसार परिमार्जन गरिएको । |
| ६. | **५.राष्ट्रभाषा :** | | साँस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिको प्रतिवेदनमा सहमति भए अनुसार गर्न संविधान मस्यौदा समितिमा पठाउने । | यो विषय साँस्कृतिक र सामाजिक ऐक्यबद्धताको आधार निर्धारण समितिको प्रतिवेदनमा समावेश भएको । |
| ७. | **६.राष्ट्रिय झण्डा** | (१) सिम्रिक रङ्गको भुइँ र गाढा नीलो रङ्गको किनारा भएको दुई त्रिकोण अलिकति जोरिएको, माथिल्लो भागमा खुर्पे चन्द्रको बीचमा सोह्रमा आठ कोण देखिने सेतो आकार र तल्लो भागमा बाह्र कोणयुक्त सूर्यको सेतो आकार अङ्कित भएको, परम्परागत झण्डा नेपालको राष्ट्रिय झण्डा हो ।<br>(२) नेपालको राष्ट्रिय झण्डा बनाउने तरिका र तत्सम्बन्धी अरु विवरण अनुसूची-२ मा उल्लेख | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |

| | | | | |
|---|---|---|---|---|
| | | भएबमोजिम हुनेछ । | | |
| ८. | **७.राष्ट्रिय गान र निशाना छाप** | (१) नेपालको राष्ट्रिय गान अनुसूची-३ मा उल्लेख भएबमोजिम हुनेछ । | उपधारा (१) मा सहमति भएको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | (प्रदेशको आफ्नो छुट्टै निशाना छाप हुने वा नहुने विषय राज्यपुनर्संरचना तथा राज्यशक्तिको बाँडफाँड समितिको प्रतिवेदनमा निर्णय भए अनुसार गर्नु पर्ने ।) |
| ९. | **८.संविधान संशोधन :** | (२) उपधारा (१) को अधीनमा रही यस संविधानको कुनै धारालाई संशोधन वा खारेज गर्ने विधेयक संघीय विधायिकाको कुनै पनि सदनमा प्रस्तुत गर्न सकिनेछ । त्यस्तो विधेयक नेपाल सरकार, **संघीय व्यवस्थापिकाको सदस्य** वा कुनै संघीय इकाईका विधायिकाबाट पेश हुन सक्नेछ ।<br>तर उपधारा (१) लाई संशोधन गरिने छैन ।<br>(३) ……………..<br>(४) …………….<br>(५) उपधारा (२) बमोजिम पेश भएको विधेयक सम्बन्धित सदनमा प्रस्तुत भएको ३० दिनभित्र सर्वसाधारण जनताको जानकारीको लागि सार्वजनिक रुपमा प्रकाशन गर्नुपर्नेछ ।<br>(६) उपधारा (२) बमोजिम पेश भएको विधेयक कुनै संघीय इकाईको सीमाना परिवर्तन र धारा …..मा उल्लिखित संघीय इकाईको एकलौटी अधिकारको विषयसँग सम्बन्धित भएमा संघीय विधायिकामा प्रस्तुत भएको ३० दिनभित्र संघीय इकाईका विधायिकाको सहमतिका लागि पठाउनु पर्नेछ ।<br>तर उपधारा (२) बमोजिम पेश भएको विधेयक कुनै निश्चित संघीय इकाईको मात्र सरोकारको विषयसँग सम्बन्धित भएमा सम्बन्धित संघीय इकाईको विधायिकाको सहमति पर्याप्त हुनेछ ।<br>(८) उपधारा (२) बमोजिम पेश भएको संघीय इकाईका विधायिकाको सहमति आवश्यक नपर्ने विधेयक वा उपधारा (७) बमोजिम संघीय इकाईका विधायिकाबाट सहमति प्राप्त भएको विधेयक संघीय विधायिकाका प्रत्येक सदनमा सो सदनको तत्काल कायम रहेका सम्पूर्ण सदस्य संख्याको कम्तीमा दुईतिहाई सदस्यहरूको बहुमतबाट पारित भएमा राष्ट्रप्रमुखको स्वीकृतिका लागि पेश गरिनेछ ।<br>(९) राष्ट्रप्रमुखले उपधारा (८) बमोजिम स्वीकृतिका लागि पेश भएको विधेयक | साविकको उपधारा (३) र (४) हटाइएको ।<br><br>उपधारा (२), (५), (६), (८) र (९) सहमति भएकोले संविधान मस्यौदा समितिमा पठाउने । | बोल्ड गरिएका शव्दहरु तत्कालीन संविधानसभाको निर्णयानुसार परिमार्जन गरिएको |

| | | | | |
|---|---|---|---|---|
| | | प्राप्त भएको मितिले १५ दिनभित्र स्वीकृत गर्नेछ । *(विधायिका एक सदनात्मक हुने वा दुई सदनात्मक हुने, त्यसको नाम के हुने भन्ने विषय अर्को समितिको कार्यक्षेत्रमा रहेकोले त्यहाबाट निर्णय भई आएबमोजिम विधायिकाको नाम राख्नु पर्ने हुन्छ ।)* | | |
| १०. | **जनमत संग्रहसंग सम्वन्धी व्यवस्था** | **(१) यस संविधानमा अन्यत्र व्यवस्था भएकोमा वाहेक राष्ट्रिय महत्वको कुनै विषयमा जनमत संग्रहवाट निर्णय गर्न आवश्यक छ भनी संघीय व्यवस्थापिकाले तत्काल कायम रहेका सम्पूर्ण सदस्यहरुको दुई तिहाई सदस्यको वहुमतबाट निर्णय गरेमा त्यस्तो विषयमा जनमत संग्रहवाट निर्णय लिन सकिने छ ।**<br>**(२) जनमत संग्रह सम्बन्धी अन्य व्यवस्था कानूनद्वारा निर्धारित भए बमोजिम हुनेछ ।** | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | तत्कालीन संविधानसभाको मिति २०६७/१०/१२ को निर्णय र निर्देशन बमोजिम थप गरिएको यो व्यवस्था संविधानको मस्यौदाको उपयुक्त स्थानमा राख्ने । |
| ११. | **९.राजनीतिक दलको गठन, दर्ता र सञ्चालन** | (१) समान राजनैतिक विचारधारा, दर्शन र कार्यक्रममा प्रतिवद्ध व्यक्तिहरूले धारा .........( मौलिक हकमा राजनीतिक दल खोल्ने स्वतन्त्रता सम्बन्धी) अन्तर्गत बनेको कानूनको अधीनमा रही राजनीतिक दलको गठन गरी सञ्चालन गर्न र आफ्नो विचारधारा, दर्शन र कार्यक्रमप्रति जनसाधारणको समर्थन र सहयोग प्राप्त गर्नको लागि त्यसको प्रचार र प्रसार गर्न, गराउन वा सो प्रयोजनका लागि अन्य कुनै काम गर्न सक्नेछन् ।<br>(२) उपधारा (१) बमोजिम गठन भएका राजनीतिक दलले प्रचलित कानून बमोजिमको कार्यविधि पूरा गरी निर्वाचन आयोगमा दल दर्ता गराउनु पर्नेछ ।<br>(३) उपधारा (२) बमोजिम दल दर्ताको लागि निवेदन गर्दा राजनीतिक दलको विधान, घोषणापत्र, नियमावली र वार्षिक लेखापरीक्षण प्रतिवेदन लगायत कानूनमा व्यवस्था भएबमोजिमका अन्य कुराहरु पेश गर्नु पर्नेछ ।<br>(४) उपधारा (२) बमोजिम दल दर्ताको लागि निवेदन दिंदा कुनै पनि राजनैतिक दलले देहायका शर्तहरू पूरा गर्नु पर्नेछ :-<br>(क) राजनीतिक दलको विधान र नियमावली लोकतान्त्रिक हुनु पर्छ,<br>(ख) राजनीतिक दलको विधान वा नियमावलीमा कम्तीमा पाँच वर्षमा एक पटक सो दलका संघीय र संघीय इकाई तहका प्रत्येक पदाधिकारीहरूको निर्वाचन हुने व्यवस्था हुनु पर्छ,<br>(ग) विभिन्न स्तरका कार्यकारिणी समितिमा नेपालको विविधतालाई प्रतिविम्बित गर्ने गरी समावेशी सहभागिताको व्यवस्था गरिएको हुनु पर्छ,<br>(घ) दलको विधानमा दलका सदस्यहरूलाई अनुशासित तुल्याउने प्रभावकारी व्यवस्था गरिएको हुनु पर्छ । | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |

| | | | | |
|---|---|---|---|---|
| | | (५) कुनै राजनीतिक दलको नाम, उद्देश्य, चिन्ह वा झण्डा देशको धार्मिक वा साम्प्रदायिक एकतालाई खलल पार्ने वा देशलाई विखण्डित गर्ने प्रकृतिको रहेछ भने त्यस्तो राजनीतिक दल दर्ता हुने छैन ।<br>(६) प्रादेशिक इकाई स्तरमा समेत राजनीतिक दल स्थापना, दर्ता र सञ्चालन हुन सक्नेछन् । | | |
| १२. | **१०.राजनीतिक दललाई प्रतिबन्ध लगाउन बन्देज** | (१) धारा ९ बमोजिम राजनीतिक दलको गठन गरी सञ्चालन गर्न र आफ्नो विचारधारा, दर्शन र कार्यक्रमप्रति जनसाधारणको समर्थन र सहयोग प्राप्त गर्नको लागि त्यसको प्रचार र प्रसार गर्ने कार्यमा कुनै प्रतिबन्ध लगाउने गरी बनाइएको कानून वा गरिएको कुनै व्यवस्था वा निर्णय यो संविधानको प्रतिकूल मानिनेछ र स्वतः अमान्य हुनेछ ।<br>(२) कुनै एउटै राजनीतिक दल वा एकै किसिमको राजनीतिक विचारधारा, दर्शन वा कार्यक्रम भएका व्यक्तिहरूले मात्र निर्वाचन, देशको राजनीतिक प्रणाली वा राज्य व्यवस्था सञ्चालनमा भाग लिन पाउने वा सम्मिलित हुन पाउने गरी बनाएको कानून, गरिएको कुनै व्यवस्था वा निर्णय यस संविधान प्रतिकूल मानिनेछ र स्वतः अमान्य हुनेछ । | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| १३. | **११.राजनीतिक दलको रूपमा निर्वाचनको लागि मान्यता प्राप्त गर्न दर्ता गराउनु पर्ने** | (१) निर्वाचनको प्रयोजनको लागि निर्वाचन आयोगबाट मान्यता प्राप्त गर्न चाहने धारा .....बमोजिम दर्ता भएका प्रत्येक राजनीतिक दलले प्रचलित कानून बमोजिमको कार्यविधि पूरा गरी निर्वाचन आयोगमा दर्ता गराउनु पर्नेछ ।<br>(२) उपधारा (१) बमोजिम दर्ताको लागि निवेदन दिंदा राजनीतिक दलले धारा ९ को उपधारा (३) मा उल्लिखित विवरण खुलाउनुको साथै सोही धाराको उपधारा (४) मा उल्लिखित शर्तहरु समेत पूरा गरेको हुनु पर्नेछ । | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| १४. | **१२.राजनीतिक दल सम्बन्धी अन्य व्यवस्था** | राजनीतिक दलको स्थापना, दर्ता, **सुविधा** र सञ्चालन सम्बन्धी अन्य कुराहरू कानूनमा व्यवस्था भए बमोजिम हुनेछ । | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | बोल्ड गरिएका शब्दहरु तत्कालीन संविधानसभाको निर्णयानुसार परिमार्जन गरिएको । |
| १५. | **१३.संकटकालीन व्यवस्था** | (१) नेपाल राज्यको सार्वभौमसत्ता, अखण्डता वा कुनै भागको सुरक्षामा युद्ध, बाह्य आक्रमण, सशस्त्र विद्रोह, चरम आर्थिक विशृङ्खलता, प्राकृतिक विपत्ति वा महामारीको कारणले गम्भीर सङ्कट उत्पन्न भएमा नेपाल सरकार, मन्त्रिपरिषदको सिफारिसमा राष्ट्रप्रमुखले नेपाल राज्यभर वा कुनै खास क्षेत्रमा लागू हुने गरी सङ्कटकालीन अवस्थाको घोषणा गर्न वा आदेश जारी गर्न सक्नेछ ।<br>**(२) उपधारा (१) मा जुनसुकै कुरा लेखिएको भएतापनि कुनै प्रदेशमा प्राकृतिक विपत्ति वा महामारीको कारणले गम्भीर संकट उत्पन्न** | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | (संकटकालीन अवस्थाको घोषणा विधायिकाबाट अनुमोदन हुनै पर्ने, विधायिका एक सदनात्मक वा दुई सदनात्मक के हुन्छ र विधायिकाको विघटन सम्बन्धी व्यवस्था रहन्छ वा रहन्न, रहेमा विधायिका विघटन भएको अवस्थामा |

| | | | | |
|---|---|---|---|---|
| | | **भएमा सम्बन्धित प्रदेश सरकारले नेपाल सरकारसमक्ष यस धारा बमोजिम आंशिक संकटकालिन अवस्थाको घोषणा वा आदेश जारी गर्नको लागि अनुरोध गर्न सक्नेछ ।"**<br><br>(३) उपधारा (१) बमोजिम गरिएको घोषणा वा आदेश सो आदेश भएको मितिले एक महिनाभित्र अनुमोदनको लागि संघीय विधायिकाका दुवै सदनमा पेश गरिनेछ ।<br>**(४) उपधारा (३) बमोजिम अनुमोदनको लागि पेश भएको घोषणा वा आदेश संघीय विधायिकाका दुवै सदनमा तत्काल कायम रहेका सम्पूर्ण सदस्य संख्याको कम्तिमा दुई-तिहाइ बहुमतले अनुमोदन गरेमा घोषणा वा आदेश भएको मितिले तीन महिनासम्म लागू रहनेछ ।**<br>**(५) उपधारा (३) बमोजिम विधायिकाका दुवै सदनमा अनुमोदनको लागि पेश भएको घोषणा वा आदेश उपधारा (४) बमोजिम अनुमोदन नभएमा सो घोषणा वा आदेश स्वतः निष्क्रिय भएको मानिनेछ ।**<br>(६) उपधारा (१) बमोजिमको अवस्था अझै विद्यमान छ भनी उपधारा (४) बमोजिमको म्याद भुक्तान नहुँदै संघीय विधायिकाका दुबै सदनमा तत्काल कायम रहेका सम्पूर्ण सदस्य संख्याको कम्तिमा दुईतिहाइ बहुमतले प्रस्तावद्वारा निर्णय गरी अर्को एक पटक तीन महिनामा नबढाई सो प्रस्तावमा तोकिएको अवधिको लागि सङ्कटकालीन अवस्थाको घोषणा वा आदेशको म्याद बढाउन सक्नेछ ।<br>(७) उपधारा (१) बमोजिम सङ्कटकालीन अवस्थाको घोषणा वा आदेश भएपछि त्यस्तो अवस्थाको निवारण गर्न नेपाल सरकार, मन्त्रिपरिषदको सिफारिसमा राष्ट्रप्रमुखले आवश्यक आदेश जारी गर्न सक्नेछ । त्यसरी जारी भएको आदेश सङ्कटकालीन अवस्था बहाल रहेसम्म कानून सरह लागू हुनेछ ।<br>(८) नेपाल सरकार, मन्त्रिपरिषद्को सिफारिसमा राष्ट्रप्रमुखबाट उपधारा (१) बमोजिम सङ्कटकालीन अवस्थाको घोषणा वा आदेश गरिंदा सो घोषणा वा आदेश बहाल रहेसम्मको लागि भाग ... मा व्यवस्था भएका मौलिक हकहरुमध्ये धारा ... मा उल्लेखित हकहरु निलम्बन गर्न सकिनेछ ।<br>तर धारा ... बमोजिम संवैधानिक उपचारको हक र बन्दी प्रत्यक्षीकरणको उपचार प्राप्त गर्ने हक निलम्बन गरिने छैन ।<br>(९) उपधारा (८) बमोजिम यस संविधानको कुनै धारा निलम्बन गरिएकोमा सो धाराले प्रदान गरेको मौलिक हकको प्रचलनको लागि कुनै अदालतमा निवेदन दिन वा त्यस सम्बन्धमा कुनै अदालतमा प्रश्न उठाउन सकिने छैन ।<br>(१०) उपधारा (१) बमोजिमको घोषणा वा आदेश | | संकटकालीन अवस्थाको घोषणा भएमा के कसरी अनुमोदनको व्यवस्था मिलाउने भन्ने विषयमा व्यवस्थापिकीय अंगको स्वरुप निर्धारण समितिको प्रतिवेदन र संकटकालीन अवस्थाको घोषणा मन्त्रिपरिषदको सिफारिशमा राष्ट्रप्रमुखबाट हुने वा राष्ट्रप्रमुखले गर्ने विषयमा राज्यको शासकीय स्वरुप निर्धारण समितिको प्रतिवेदन संवैधानिक समितिमा प्राप्त भएपछि निर्णय गर्न उपयुक्त हुन्छ ।) भन्ने टिप्पणी समितिको टिप्पणीमा नै उल्लेख भएको ।<br><br>बोल्ड गरिएको व्यवस्था तत्कालीन संविधानसभाको मिति २०६७/१०/१२ को निर्णयानुसार परिमार्जन गरिएको । |

| | | | | |
|---|---|---|---|---|
| | | बहाल रहेको अवस्थामा कुनै पदाधिकारीले बदनियतसाथ कुनै काम गरेबाट कसैलाई कुनै प्रकारको क्षति भएको रहेछ भने निजले सो घोषणा वा आदेश समाप्त भएको मितिले तीन महिनाभित्र आफूलाई परेको क्षति बापत पीडितले क्षतिपूर्तिको दाबी गरेमा अदालतले कानून बमोजिमको उचित क्षतिपूर्ति भराइदिन र पीडकलाई सजाय गर्न सक्नेछ ।<br>(११) उपधारा (१) बमोजिम गरिएको सङ्कटकालीन अवस्थाको घोषणा वा आदेश नेपाल सरकार, मन्त्रिपरिषद्को सिफारिशमा राष्ट्रप्रमुखबाट सो घोषणा वा आदेश बहाल रहेसम्म जुनसुकै बखत फिर्ता लिन सकिनेछ । | | |
| १६. | **१६.माफी** | मन्त्रिपरिषद्को सिफारिसमा राष्ट्रप्रमुखले जुनसुकै अदालत, विशेष अदालत, सैनिक अदालत वा अन्य कुनै न्यायिक, अर्ध न्यायिक वा प्रशासकीय पदाधिकारी वा निकायले गरेको सजायलाई कानूनमा व्यवस्था भएबमोजिम माफी, मुल्तवी, परिवर्तन वा कम गर्न सक्नेछ । | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| १७. | **१७.उपाधि, सम्मान र विभूषण** | (१) मन्त्रिपरिषद्को सिफारिसमा राष्ट्रप्रमुखबाट राज्यका तर्फबाट दिइने उपाधि, सम्मान र विभूषणहरू प्रदान हुनेछन् ।<br>(२) नेपालको कुनै नागरिकले कुनै विदेशी मुलुकको सरकारबाट प्रदान गरिने उपाधि, सम्मान वा विभूषण ग्रहण गर्नुअघि नेपाल सरकारबाट स्वीकृति प्राप्त गर्नु पर्नेछ । | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| १८. | **१८.सरकारी सेवाको गठन** | | राज्यको शासकीय स्वरुप निर्धारण समितिको प्रतिवेदनमा भएको सहमति अनुसार गर्न संविधान मस्यौदा समितिमा पठाउन उपयुक्त हुने । | यो विषय राज्यको शासकीय स्वरुप निर्धारण समितिको प्रतिवेदनमा समावेश रहेको । |
| १९. | **१९.संवैधानिक निकायका पदाधिकारीहरूको सुनुवाइ र नागरिकता सम्बन्धी व्यवस्था** | | मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समिति र संवैधानिक निकायको संरचना निर्धारण समितिको प्रतिवेदनमा भएको सहमति अनुसार गर्न संविधान मस्यौदा समितिमा पठाउन उपयुक्त हुने । | पदाधिकारीको नागरिकता सम्बन्धि व्यवस्था मौलिक अधिकार तथा निर्देशक सिद्धान्त समिति र सुनुवाई सम्बन्धि व्यवस्था संवैधानिक निकायको संरचना निर्धारण समितिको प्रतिवेदनमा परेको । |
| २०. | **२०. सन्धि वा सम्झौताको अनुमोदन, सम्मिलन, स्वीकृति वा समर्थन :** | | राष्ट्रिय हितको संरक्षण समितिको प्रतिवेदनमा समावेश रहेकोले सोही प्रतिवेदनमा भएको सहमति अनुसार गर्न संविधान मस्यौदा समितिमा पठाउन उपयुक्त हुने । | राष्ट्रिय हितको संरक्षण समितिको कार्य क्षेत्रभित्र परेको । |

| | | | |
|---|---|---|---|
| २१. | **संङक्रमणकालीन व्यवस्था**<br>*(नेपालको अन्तरिम संविधान, २०६३ खारेज हुने र नयाँ संविधान कार्यान्वियनमा नआईसकेको अवस्थालाई संक्रमणकालीन अवस्था भनिएको हो । हाल भएका संवैधानिक संयन्त्रमा के कस्तो परिवर्तन हुन्छ, तिनीहरुका काम, कर्तव्य र अधिकारमा के कस्तो अन्तर आउँछ र नयाँ संयन्त्र बन्न के कति समय लाग्छ भन्ने विषय स्पष्ट नभईकन संक्रमणकालीन व्यवस्थालाई पूर्णता दिन सकिदैन । विषयगत समितिहरुबाट प्राप्त मस्यौदा र संवैधानिक समितिबाट मस्यौदा एकीकरण भई संविधानको विधेयक तयार गर्ने अवधिसम्म संक्रमणकालीन व्यवस्था अन्तर्गत राखिनु पर्ने अन्य विषयहरु थप गर्नु पर्ने अवस्था आउने भएकोले यो भागलाई अन्तिमसम्म खुला राख्नु पर्ने समितिको सुझाव रहेको ।)* | | **यो भागसंग सम्बन्धित प्रश्नावली**<br>१२. संक्रमणकालीन व्यवस्था अन्तर्गत प्रस्तावित व्यवस्थाको सट्टा देहायका प्रावधानहरु थप गर्नुपर्ने वा नपर्ने ?<br>नयाँ संविधान जारी भएको मितिले वढीमा एक महिना भित्र राष्ट्रपति तथा मन्त्रीमण्डलको अन्तरिम व्यवस्था व्यवस्थापिका-संसदको रुपम कायम रहने संविधान सभाले गर्ने ।<br>● संबैधानिक अंगका पदाधिकारीहरु र न्यायाधीशहरुको अन्तरिम व्यवस्था नयाँ संविधान जारी भएको तीन महिना भित्र व्यवस्थापिका-संसदको रुपमा कायम रहने संविधान सभाले गर्ने ।<br>● स्वायत्त प्रादेशिक राज्यहरुको अन्तरिम व्यवस्था नयाँ संविधान जारी भएको तिन महिना भित्र व्यवस्थापिका - संसदको रुपमा कायम रहने संविधान सभाले गर्ने ।<br>१३.बाधा अड्काउ फुकाउने अधिकार संक्रमणकालीन भाग अन्तर्गत राख्ने वा नराख्ने ?<br>१४.बाधा अड्काउ फुकाउने आदेश व्यवस्थापिका संसदवाट एकमहिना भित्र अनुमोदन गराउनुपर्ने वा नपर्ने<br>१५.संक्रमणकालीन व्यवस्था अन्तर्गत वर्तमान संविधानसभालाई नै व्यवस्थापिकाको रुपमा निरन्तरता दिने तर न्यायाधीश एवं संवैधानिक निकायका पदाधिकारीहरुको हकमा अन्यथा व्यवस्था राखिनुले दोहोरो मापदण्ड अवलम्वन गरेको देखिने हुँदा एकरुपता कायम गरिनुपर्ने वा नपर्ने ? |

| सि.नं | विषय | सहमति भएको विषय | समितिको निर्क्यौल | कैफियत |
|---|---|---|---|---|
| २२ | **२२.मन्त्रिपरिषद् सम्बन्धी व्यवस्था** | (२) यो संविधान बमोजिम मन्त्रिपरिषद् गठन नभएसम्म उपधारा (१) बमोजिमको मन्त्रिपरिषद् कायम रहनेछ । | उपधारा (२) मा सहमति भएको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| २३. | **२३.विधायिकी अधिकार** | (२) यो संविधान जारी हुँदाका बखत कायम रहेको व्यवस्थापिका-संसद सचिवालय र सो सचिवालयमा कार्यरत पदाधिकारी र कर्मचारी यसै संविधान बमोजिम कायम हुने संसद सचिवालय र नियुक्ति भएका पदाधिकारी र कर्मचारी मानिनेछन् । | उपधारा (२) मा सहमति भएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| २४. | **२४.न्यायपालिका सम्बन्धी व्यवस्था** | (१) यो संविधान प्रारम्भ हुँदाका बखत कायम रहेका सर्वोच्च अदालत, पुनरावेदन अदालत र जिल्ला अदालतहरू यस संविधान बमोजिमको न्यायपालिकाको संरचना तयार नभएसम्म कायम रहनेछन् । यो संविधान प्रारम्भ हुनुअघि दायर भएका मुद्दाहरू र यो संविधान प्रारम्भ भएपछि दायर हुने मुद्दाहरु तत् तत् अदालतबाट निरूपण गर्न यो संविधानले बाधा पुऱ्याएको मानिने छैन । | उपधारा (१) सहमतिको विषय भएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| २५. | **२५.संवैधानिक निकाय र पदाधिकारीहरू सम्बन्धी व्यवस्था** | (१) यो संविधान प्रारम्भ हुँदाका बखत कायम रहेका संवैधानिक निकाय र पदाधिकारीहरूमध्ये यस संविधानमा उल्लेख नगरिएका संवैधानिक निकाय र पदाधिकारीहरू यो संविधान प्रारम्भ भएपछि कायम रहने छैनन् ।<br>(२) यो संविधान प्रारम्भ हुँदाका बखत कायम रहेका संवैधानिक निकायहरू यसै संविधान बमोजिम स्थापना भएको मानिने छन् र प्रचलित कानून बमोजिम ती निकायहरूमा विचाराधीन रहेका विषयहरूलाई निरन्तरता दिन यस संविधानले बाधा पुऱ्याएको मानिने छैन। | उपधारा (१) र (२) मा सहमति भएको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| २६. | **२६.वर्तमान कानून लागू रहने** | (१) संविधानसभाद्वारा भए गरेका निर्णय र काम कारबाही यो संविधानसँग नबाझिएको हदसम्म यसै संविधान बमोजिम भए गरेको मानिनेछन् ।<br>(२) यो संविधान लागू हुँदाका बखत कायम रहेका कानूनहरू खारेज या संशोधन नभएसम्म कायम रहनेछन् ।<br>तर यो संविधानसँग बाझिएको कानून यो संविधान | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |

| | | | | |
|---|---|---|---|---|
| | | बमोजिमको विधायिकाको पहिलो बैठक बसेको मितिले एक वर्षपछि बाझिएको हदसम्म स्वत: अमान्य हुनेछ । | | |
| २७. | **२७.स्थानीय निकाय सम्बन्धी व्यवस्था** | यस संविधानद्वारा व्यवस्था गरिएको स्थानीय निकायको गठन नभएसम्म हाल विद्यमान स्थानीय निकायहरु यथावत कायम रहनेछन् । | सहमति भएको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| २८. | **२९.परिभाषा** | (१) विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस संविधानमा,-<br>(क) "धारा" भन्नाले यो संविधानको धारा सम्झनु पर्छ ।<br>(ख) "नागरिक" भन्नाले नेपालको नागरिक सम्झनु पर्छ ।<br>(ग) "विधेयक" भन्नाले संघीय वा प्रादेशिक विधायिकामा पेश भएको ऐनको मस्यौदा सम्झनु पर्छ ।<br>(घ) "पारिश्रमिक" भन्नाले तलब, भत्ता, निवृत्तिभरण र अन्य कुनै किसिमको पारिश्रमिक तथा सुविधा समेत सम्झनु पर्छ ।<br>*(परिभाषा गर्नु पर्ने शब्दहरुको पहिचान संविधानको समग्र मस्यौदा तयार भएपछि मात्र यकिन हुने भएकोले अहिले केही शब्दहरुको मात्र परिभाषा प्रस्ताव गरिएको छ ।)*<br>(२) विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस संविधानमा व्यक्त भएका कुराहरूको अधीनमा रही कानून व्याख्या सम्बन्धी प्रचलित कानूनी व्यवस्था नेपाल कानूनको व्याख्यामा लागू भए सरह यस संविधानको व्याख्यामा पनि लागू हुनेछ । | सहमति भएको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| २९. | **३१.खारेजी :** | नेपालको अन्तरिम संविधान, २०६३" खारेज गरिएको छ । | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| ३०. | | अनुसूचीहरु<br>१. नेपाल राज्यभित्र रहने संघीय इकाईहरु<br>अनुसूची - १<br>(धारा ४ को उपधारा (२) संग सम्बन्धित)<br>**नेपाल राज्यभित्र रहने संघीय इकाईहरु** | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| ३१. | | २. नेपालको राष्ट्रिय झण्डा<br>अनुसूची - २<br>(धारा ६ को उपधारा (२) संग सम्बन्धित) | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |

| | | | | |
|---|---|---|---|---|
| | | **राष्ट्रिय झण्डा**<br>(क) किनाराभित्रको आकार बनाउने तरिका<br>(१) एउटा सिम्रिक रङ्गको रातो कपडामा तल्लो भागमा चाहिएको जति लम्बाइको रेखा बायाँबाट दाहिनेतिर खिच्ने र यसलाई क ख नाम राख्ने ।<br>(२) क बाट सीधा माथि ग सम्म क ख को लम्बाइ जतिमा क ख कै तृतीयांश थप्दा जति हुन्छ त्यति लामो हुने गरी क ग रेखा खिच्ने । क ग मा क बाट क ख को लम्बाइ जति लिई घ चिन्हो लगाउने । ख र घ जोड्ने ।<br>(३) ख घ रेखामा ख बाट क ख जति लिई ङ चिन्हो लाउने ।<br>(४) ङ हुँदै क ख को समानान्तर पारेर क ग मा पर्ने बिन्दु च बाट शुरु गरी दाहिनेतिर छ सम्म क ख को लम्बाइ जति रेखा खिच्ने ।<br>(५) ग र छ लाई जोड्ने ।<br>(ख) चन्द्र बनाउने तरिका<br>(६) क ख को चतुर्थांश जति क बाट दाहिनेमा ज चिन्हो लाउने र त्यहाँबाट माथि क ग को समानान्तर पारेर ग छ लाई झ मा छुने रेखा खिच्ने ।<br>(७) ग च को आधा ञ बाट क ख को समानान्तर पारेर रेखा दायाँतिर खिची ग छ लाई ट मा छुने ।<br>(८) ञ ट र ज झ रेखा काटिएको ठाउँमा ठ चिन्हो राख्ने ।<br>(९) ञ र छ जोड्ने ।<br>(१०) ञ छ र ज झ काटिएको बिन्दुमा ड चिन्हो लाउने ।<br>(११) ड लाई केन्द्र मानी ख घ रेखालाई न्यूनतम अन्तर पर्ने गरी स्पर्श गर्दा हुने जति दूरी पर्ने गरी ज झ रेखाको तल्लो भागमा ढ चिन्हो लगाउने ।<br>(१२) ड मा छोई क ख को समानान्तर रेखा बायाँबाट दायाँतिर खिच्ने र यसले क ग लाई छोएको बिन्दुको नाम ण राख्ने ।<br>(१३) ठ केन्द्र लिएर ठ ढ व्यासार्द्धले तल्लो भागमा वृत्त खण्ड खिच्ने र ण ड बाट गएको रेखालाई यसले छोएको दुवै ठाउँमा क्रमशः त र थ नाम राख्ने ।<br>(१४) ड लाई केन्द्र मानी ड थ | | |

| | | | | |
|---|---|---|---|---|
| | | व्यासार्द्धले तल्लो भागमा अर्ध वृत्ताकार त थ लाई छुने गरी खिच्ने ।<br>(१५) ढ केन्द्र मानी ढ ड को व्यासार्द्धले त ढ थ वृत्त खण्डको दुवैतर्फ छुने गरी वृत्त खण्ड खिच्ने र यसले त ढ थ लाई छोएको विन्दुहरुको नाम क्रमशः द र ध राख्ने । द ध लाई जोड्ने । द ढ र ज झ काटिएको विन्दुको नाम न राख्ने ।<br>(१६) न लाई केन्द्र मानेर व्यासार्द्ध न ध ले त ढ थ को माथिल्लो भागमा दुवै ठाउँमा छुने गरी अर्ध वृत्ताकार खिच्ने ।<br>(१७) न लाई केन्द्र मानेर व्यासार्द्ध न ड ले त ढ थ को माथिल्लो भागमा दुवै ठाउँमा छुने गरी वृत्त खण्ड खिच्ने ।<br>(१८) यो अनुसूचीको नं. (१६) को अर्ध वृत्ताकार भित्र र नं. (१७) को वृत्त खण्ड बाहिर चन्द्रमाको आठवटा बराबरका कोण बनाउने ।<br>(ग) <u>सूर्य बनाउने तरिका</u><br>(१९) क च को आधा प बाट क ख को समानान्तर पारेर ख ङ मा छुने गरी प फ रेखा खिच्ने ।<br>(२०) ज झ र प फ काटिएको विन्दु ब केन्द्र मानेर ड ढ को व्यासार्द्धले वृत्ताकार पूरा खिच्ने ।<br>(२१) ब लाई केन्द्र मानेर ठ ढ व्यासार्द्धले वृत्ताकार पूरा खिच्ने ।<br>(२२) यो अनुसूचीको नं. (२०) को वृत्ताकार बाहिर र यो अनुसूचीको नं. (२१) को वृत्ताकारभित्र परेको गोल घेराको बीच भागमा सूर्यको बाह्रवटा बराबरका कोणहरु दुई चुच्चाहरुले ज झ रेखामा छुने गरी बनाउने ।<br>(घ) <u>किनारा बनाउने तरिका</u><br>(२३) न ढ को चौडाइ जति गाढा नीलो रङ्गको किनारा झण्डाको आकारको बाहिरी सबैतिरको सीमामा थप्ने, तर झण्डाको पाँच कोणहरुमा चाहिं बाहिरी कोणहरु पनि भित्रै सरहका बनाउने ।<br>(२४) झण्डा डोरी लगाई प्रयोग गरेमा माथि बताइएकै पट्टि राख्ने । झण्डा लट्ठीमा घुसार्ने हो भने क ग पट्टि आवश्यक परे जति किनारा चौड्याउने । डोरी वा लट्ठीको प्रयोगमा क ग को पट्टिमा प्वाल | | |

| | | | | |
|---|---|---|---|---|
| | | राख्ने ।<br>स्पष्टीकरण : झण्डा बनाउँदा खिचिएका ज झ द ध, च ङ, ङ घ, ञ छ, ण थ, ञ ट र प फ रेखाहरु कल्पित हुन् । त्यस्तै सूर्यका बाहिरी र भित्री वृत्ताकारहरु तथा खुर्पे चन्द्र बाहेक अरु वृत्त खण्ड पनि कल्पित हुन् । यिनलाई झण्डामा देखाइँदैन । | | |
| **३२.** | | ३. नेपालको राष्ट्रिय गान<br>अनुसूची - ३<br>(धारा ७ को उपधारा (१) संग सम्बन्धित)<br>**नेपालको राष्ट्रिय गान**<br>सयौं थुँगा फूलका हामी एउटै माला नेपाली<br>सार्वभौम भई फैलिएका मेची-महाकाली ।<br>प्रकृतिका कोटीकोटी सम्पदाको आँचल<br>वीरहरुका रगतले स्वतन्त्र र अटल<br>ज्ञानभूमि शान्तिभूमि तराइ पहाड हिमाल<br>अखण्ड यो प्यारो हाम्रो मातृभूमि नेपाल<br>बहुल जाति भाषा धर्म संस्कृति छन् विशाल<br>अग्रगामी राष्ट्र हाम्रो जय जय नेपाल । | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |
| **३३.** | | ४. नेपालको निशाना छाप<br>अनुसूची - ४<br>(धारा ७ को उपधारा (२) संग सम्बन्धित)<br><br>**नेपालको निशाना छाप** | यो विषयमा सहमति रहेको देखिएकोले संविधान मस्यौदा समितिमा पठाउने । | |

अनुसूची १

**तत्कालिन संविधानसभावाट मिति २०६७१०१२ को निर्णयानुसार संवैधानिक समितिको प्रतिवेदनको सन्दर्भमा सोही समितिलाई दिइएको सुझाव एवं निर्देशन**

१. मस्यौदा प्रस्तावनाको अनुच्छेद ४ को अन्त्यमा रहेको "स्मरण गर्दै" भन्ने शब्दावलीको सट्टा "अनुभूति गर्दै" भन्ने शब्द राख्ने, अरु परिमार्जन गर्न आवश्यक नरहेको ।
२. छैठौ अनुच्छेदमा रहेको "सक्षम, निष्पक्ष र स्वतन्त्र न्यायपालिका" भन्ने शब्दहरुको सट्टा "स्वतन्त्र र उत्तरदायी न्यायपालिका" भन्ने शब्दावली राख्ने ।
३. प्रस्तावनाको अनुच्छेद ८ मा रहेको "सबै प्रकारका विभेद" भन्ने शब्द पछि "र उत्पीडनको" भन्ने शब्दहरु थप गर्ने र उक्त अनुच्छेदको व्याख्यात्मक टिप्पणीमा "मजदुर, किसान, कामदारवर्गको विशेष अधिकार सुनिश्चित हुने गरी सबै समुदाय र वर्गलाई न्याय प्रदान गर्ने र समतामूलक समाजको स्थापना गर्ने लक्ष्यलाई स्पष्ट पार्न यो अनुच्छेद राखिएको" भन्ने व्यहोरा राख्ने ।
४. मस्यौदा प्रस्तावनाको अनुच्छेद ९ को व्याख्यात्मक टिप्पणीमा "नेपाली जनताले सामन्तवाद, साम्राज्यवाद, विस्तारवाद र सबै प्रकारका बिदेशी हस्तक्षेप बिरुद्धमा बिगतमा गर्दै आएका संघर्ष र आन्दोलनहरुलाई सम्मान गर्दै अब उप्रान्त संघीय लोकतान्त्रिक गणतन्त्रात्मक शासन व्यवस्थाको माध्यमबाट नेपाली राष्ट्रियता, स्वाधीनता, सार्वभौमसत्ता र राष्ट्रिय अखण्डतालाई मजबुत बनाउने तथा अग्रगमन सहितको दिगो शान्ति, समृद्धि र विकासको माध्यमद्वारा नेपाली जनताको जीवनस्तर अभिवृद्धि गर्दै लोकतन्त्रको लाभहरु उपयोग गर्न सक्ने स्थितिको सृजना गर्ने प्रतिवद्धता सहित यो संविधान जारी भएको व्यहोरा उल्लेख गरिएको हो ।" भन्ने व्यहोरा राख्ने ।
५. मस्यौदामा रहेको राष्ट्रको परिभाषा यथावत राख्ने । नेपाल राज्यको परिभाषाको मस्यौदामा "समावेशी" शब्दपछि "लोकतन्त्रात्मक" शब्द थपेर "समावेशी लोकतन्त्रात्मक" वनाई व्याख्यात्मक टीप्पणीमा जनताको समावेशी लोकतन्त्रात्मक राज्य हुने कुरा थप्ने । नेपाल राज्यको परिभाषामा रहेको "बहुराष्ट्रिय" शब्दको सट्टा "बहुजातीय" शब्द राख्ने र व्याख्यात्मक टिप्पणीमा नेपाल वहुजातिय (Multinational) विशेषतायुक्त समेत हुने भनेर थप्ने ।
६. देश संघीय लोकतान्त्रिक गणतन्त्रमा रुपान्तरण भएको परिवर्तित सन्दर्भमा राष्ट्रिय झण्डाको नयाँ व्याख्या गर्ने गरी झण्डा यथावत राख्ने ।
७. राष्ट्रिय गानमा रहेको "वीरहरु" शब्दले "विरंगना" समेतलाई समेट्ने भएकोले कुनै परिवर्तन गर्न नपर्ने ।
८. जनमत संग्रहसंग सम्बन्धित विषयमा देहायबमोजिमको व्यवस्था गरी छुट्टै धारामा संविधानको उपयुक्त स्थानमा राख्ने :

"(१) यस संविधानमा अन्यत्र व्यवस्था भएकोमा बाहेक राष्ट्रिय महत्वको कुनै विषयमा जनमत संग्रहबाट निर्णय गर्न आवश्यक छ भनी संघीय व्यवस्थापिकाले तत्काल कायम रहेका सम्पूर्ण सदस्यहरुको दुई तिहाई सदस्यको वहुमतबाट निर्णय गरेमा त्यस्तो विषयमा जनमत संग्रहबाट निर्णय लिन सकिने छ ।

(२) जनमत संग्रह सम्बन्धी अन्य व्यवस्था कानूनद्वारा निर्धारण भए बमोजिम हुनेछ ।"

९. मस्यौदाको धारा ८ मा संविधान संशोधन शीर्षक अन्तर्गतको उपधारा (३) र (४) को व्यवस्था हटाई उक्त धाराको मस्यौदालाई मिलाउने ।
१०. सोही धारा ८ को उपधारा (२) मा रहेको "तोकिए वमोजिमको न्यूनतम संख्याका सदस्यहरु" को सट्टा "संघीय व्यवस्थापिकाको सदस्य" राखी मस्यौदा परिमार्जन गर्ने र त्यसको व्याख्यात्मक टिप्पणीमा "यस व्यवस्थाले सर्वसाधारण जनताहरुले संविधान संशोधनका सम्बन्धमा विभिन्न किसीमले सुझाव दिन सक्ने र विधायिकाका सदस्यहरुले त्यस्ता सुझावहरु अध्ययन गरी संविधान संशोधन प्रस्ताव गर्न उपयुक्त सम्झेमा एकजना सदस्यले समेत संशोधन प्रस्ताव राख्न सक्ने गरी संविधान संशोधनको प्रस्ताव पेश गर्ने सम्बन्धमा लचिलो व्यवस्था गरिएको" भन्ने वाक्यांश थप गर्ने ।
११. प्रारम्भिक मस्यौदाको धारा १२ मा उपधारा (२) नरहेको हुनाले प्रारम्भमा रहेको (१) हटाउने ।
१२. सोही धारामा रहेको दर्ता र सञ्चालन भन्ने शब्दहरुको सट्टा दर्ता, सुविधा र सञ्चालन भन्ने शब्दहरु राख्ने ।
१३. प्रारम्भिक मस्यौदाको धारा १३ को उपधारा (१) पछि देहायको उपधारा (२) थप गरी उपधाराको क्रम मिलाउने :-

"(२) उपधारा (१) मा जुनसुकै कुरा लेखिएको भएतापनि कुनै प्रदेशमा प्राकृतिक विपत्ति वा महामारीको कारणले गम्भिर संकट उत्पन्न भएमा सम्बन्धित प्रदेश सरकारले नेपाल सरकारसमक्ष यस धारा बमोजिम आशिक संकटकालिन अवस्थाको घोषणा वा आदेश जारी गर्नको लागि अनुरोध गर्न सक्नेछ ।"

**देहायका विषयहरुमा संवैधानिक समितिले नै थप छलफल गरी टुंगो लगाई मस्यौदा परिमार्जन गर्ने**

**सि.नं. १ प्रस्तावनामा :**

१. प्रस्तावनाको अनुच्छेद ३ मा माओवादी जनयुद्ध लगायत सबै आन्दोलनको नाम उल्लेख गर्ने वा माओवादी जनयुद्ध लगायत सबै आन्दोलनको नाम व्याख्यात्मक टिप्पणीमा राख्ने वा माओवादी जनयुद्ध व्याख्यात्मक टिप्पणीमा पनि नराख्ने ?

२. प्रस्तावनाको अनुच्छेद ६ मा 'जनताको समानुपातिक समावेशी' भन्ने शब्दहरुको सट्टा 'बहुलवादमा आधारित' भन्ने शब्दहरु राख्ने वा नराख्ने ?

३. अनुच्छेद ७ मा आत्मनिर्णयको अधिकारको परिभाषा, सो को प्रयोगको विधि र यस अन्तर्गत गर्न पाईने र नपाईने कुराहरु स्पष्ट पारेर परिमार्जन गर्नु पर्ने वा नपर्ने ?

**सि.नं. ६ संविधान संशोधनमा :**

४. देहायको विषयको प्रतिकूल असर पर्ने गरी संविधान संशोधन हुन नसक्ने भन्ने व्यवस्था राख्ने वा नराख्ने ?
   क) सार्वभौमसत्ता
   ख) राष्ट्रिय स्वाधिनता
   ग) संघीयता
   घ) बहुलवाद
   ङ) धर्म निरपेक्षता
   च) स्थानीय स्वायत्तता र स्वशासन,
   छ) समानुपातिक समावेशी
   ज) आदिवासीको अग्राधिकार

५. धारा ८ को उपधारा (७) मा उल्लेख गरिएको विधेयक पछि रहेको "वहुमत संघीय इकाईको विधायिकाको" भन्ने शब्दहरुको सट्टा "५०% भन्दा वढी जनताको प्रतिनिधित्व गर्ने संघीय इकाईको विधायिकाले" भन्ने शब्द थप्ने वा नथप्ने ?

**सि.नं. ९ विविधमा :**

६. नेपाली राजदुत र विशेष प्रतिनिधी नियुक्ती समानुपातिक समावेशी सिद्धान्तको आधारमा गर्ने वा समावेशी सिद्धान्तको आधारमा गर्ने ?

**सि.नं. १० संक्रमणकालीन व्यवस्थामा :**

७. राष्ट्रपति र उपराष्ट्रपति सम्बन्धी व्यवस्थाको सट्टामा "यो संविधान प्रारम्भ हुदाँका वखत वहाल रहेका राष्ट्रपति र उपराष्ट्रपति नयाँ संविधान वमोजिम निर्वाचन नभएसम्म कायम रहने र कुनै करणवस पद रिक्त भएमा पदपूर्ति हुने प्रकृया अन्तरिम संविधान वमोजिम हुनेछ" भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

८. कार्यकारीणी सम्बन्धी व्यवस्थाको सट्टामा "यो संविधान प्रारम्भ हुदाँका वखत कायम रहेको मन्त्रिपरिषद् यसै संविधान अर्न्तगत भएको संघीय मन्त्रिपरिषद् मानिनेछ" भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

९. विधायिकी अधिकार सम्बन्धी व्यवस्थाको सट्टामा "यो संविधान वमोजिम निर्वाचित संघीय संसद/व्यवस्थापिका संसदवाट संघिय मन्त्रिपरिषद् गठन नभएसम्म साविकको मन्त्रिपरिषद् कायम रहने छ । तर संघीय संसद/व्यवस्थापिका संसदको प्रथम अधिवेशन पश्चात ६० दिन भित्र यस संविधान अर्न्तगतको मन्त्रिपरिषद् गठन हुनेछ ।" भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

१०. धारा २४ को उपधारा (२) मा रहेको 'वहाल रहेका न्यायाधीशहरु' भन्ने शब्दहरु पछि रहेको "यो संविधानमा व्यवस्था भएको नियुक्ति सम्बन्धी व्यवस्था कार्यान्वयन नभएसम्म" भन्ने शब्दहरुको सट्टा "यसै संविधान बमोजिम नियुक्ति भएको मानी आ-आफ्नो पदमा यथावत कायम रहने छन्" भन्ने व्यवस्था राख्ने वा नराख्ने ?

११. धारा २५ को उपधारा (३) मा रहेको 'कार्यरत पदाधिकारीहरु' भन्ने शब्द पछि रहेको "यो संविधानमा व्यवस्था भएको नियुक्ति सम्बन्धी व्यवस्था कार्यान्वयन नभएसम्म" भन्ने शब्दहरुको सट्टा 'यसै संविधान बमोजिम नियुक्ति भएको मानी आ-आफ्नो पदमा यथावत कायम रहने छन्' भन्ने शब्दहरु राख्ने वा नराख्ने ?

१२. संक्रमणकालीन व्यवस्था अन्तर्गत प्रस्तावित व्यवस्थाको सट्टा देहायका प्रावधानहरु थप गर्नुपर्ने वा नपर्ने ?

- नयाँ संविधान जारी गएको मितिले वढीमा एक महिना भित्र राष्ट्रपति तथा मन्त्रीमण्डलको अन्तरिम व्यवस्था व्यवस्थापिका-संसदको रुपम कायम रहने संविधान सभाले गर्ने ।
- संबैधानिक अंगका पदाधिकारीहरु र न्यायाधीशहरुको अन्तरिम व्यवस्था नयाँ संविधान जारी भएको तीन महिना भित्र व्यवस्थापिका-संसदको रुपमा कायम रहने संविधान सभाले गर्ने ।
- स्वायत्त प्रादेशिक राज्यहरुको अन्तरिम व्यवस्था नयाँ संविधान जारी भएको तिन महिना भित्र व्यवस्थापिका -संसदको रुपमा कायम रहने संविधान सभाले गर्ने ।

१३. बाधा अड्काउ फुकाउने अधिकार संक्रमणकालीन भाग अन्तर्गत राख्ने वा नराख्ने ?

१४. बाधा अड्काउ फुकाउने आदेश व्यवस्थापिका संसदवाट एकमहिना भित्र अनुमोदन गराउनुपर्ने वा नपर्ने ?

**खुला प्रश्न**

१५. संक्रमणकालीन व्यवस्था अन्तर्गत वर्तमान संविधानसभालाई नै व्यवस्थापिकाको रुपमा निरन्तरता दिने तर न्यायाधीश एवं संवैधानिक निकायका पदाधिकारीहरुको हकमा अन्यथा व्यवस्था राखिनुले दोहोरो मापदण्ड अवलम्वन गरेको देखिने हुँदा एकरुपता कायम गरिनुपर्ने वा नपर्ने ?

**सि.नं. १२ संक्षिप्त नाम, प्रारम्भ र खारेजी**

१६. नामको पछाडी रहेको सम्बत् राख्ने वा राख्न नपर्ने ?
१७ समाजवाद उन्मुख गणतन्त्र नेपालको संविधान, २०६७ भनी नाम राख्नुपर्ने वा नपर्ने ?
१८. संघीय गणतन्त्र नेपालको संविधान, २०६७ भनी नाम राख्नुपर्ने वा नपर्ने ?
१९. जनताको संघीय गणतन्त्र नेपालको संविधान, २०६७ भनी नाम राख्नुपर्ने वा नपर्ने ?
२०. गणतन्त्र नेपालको संविधान २०६७ भनी नामाकरण गर्नुपर्ने वा नपर्ने ?
२१. संविधानको नाम पछि साल उल्लेख गर्दा नेपाल संवत ११३० उल्लेख गर्नुपर्ने वा नपर्ने ?

# अनुसूची २

## संविधान सभा

### संबैधानिक समिति, अवधारणापत्र र प्रारम्भिक मस्यौदा सम्बन्धी प्रतिवेदन अध्ययन समितिको प्रतिवेदन र विवाद समाधान सम्बन्धमा गठित उपसमितिको प्रतिवेदन अध्ययन उप समिति

| | | |
|---|---|---|
| 1 | मा.श्री भीम बहादुर रावल | संयोजक |
| 2 | मा.श्री अम्बिका बस्नेत | सदस्य |
| 3 | मा.श्री कुन्ती कुमारी शाही | सदस्य |
| 4 | मा.श्री जनार्दन शर्मा | सदस्य |
| 5 | मा.श्री दल बहादुर सुनार | सदस्य |
| 6 | मा.श्री दिपक बोहरा | सदस्य |
| 7 | मा.श्री धनराज गुरुङ | सदस्य |
| 8 | मा. श्री बलबहादुर के.सी | सदस्य |
| 9 | मा. श्री रत्न शेरचन | सदस्य |
| 10 | मा.श्री रुपा महर्जन | सदस्य |
| 11 | मा.श्री विशाल भट्टराई | सदस्य |
| 12 | मा.श्री श्रीमाया थकाली | सदस्य |
| 13 | मा. श्री प्रेम सुवाल | सदस्य |